# कल्पलोक

(भाग ३)

सम्पादक

**केशरी अम्गाई**

प्रकाशक

**हिमरश्मि साहित्यिक परिवार**

**हिमरश्मि हाई स्कुल**

तारकेश्वर-९, काठमाडौं

कल्पलोकले हिमरश्मीमा बालकथा प्रतिको

लगाव बढाएको छ ।

कथाक्रम:

१. कुलतको परिणाम - लोकेश शाही

२. चन्द्रमुखी वनको रहस्य - साइना सिं ढङ्गोल

३. जनावरको चाहाना - प्रविण मुडवरी

४. दृढ संघर्ष - नम्रता थापा

५. पब्जीको करामत - अभिलेख आचार्य

६. प्यारासुट यात्रा - आर्यस रिजाल

७. फेरिएकी सरीना - भावना अधिकारी

८. भेदभाव - सुस्मिता बानियाा

९. मीनाको मिनी कम्प्युटर - नविना के.सी.

१०. सपनाको गिरफ्तारी - आशिष गुरुङ

११. समाको ताज - रश्मिता श्रेष्ठ

१२. सोझी राधिका - अविनाश श्रेष्ठ

१३. हिम्मत - प्रतिमा रिमाल

# कल्पलोकले हिमरश्मीमा बालकथा प्रतिको लगाव बढाएको छ



**लोकेन्द्र ब. खड्का**
**प्रधानाध्यापक**

हाम्रो विद्यालय हिमरश्मि हाई स्कुल गुणस्तरीय शिक्षासँगै विद्यार्थीहरूमा भएको कोर्ष ज्ञान भन्दा केही भिन्न अन्तरनिहित क्षमताको पहिचान गरी त्यसलाई बाहिर ल्याउन ल्याउन प्रयास गर्दछ । बालबालिकाहरूसँग फरक फरक खुवी हुन्छन् । ठाउँ र अवसर पाए भन्ने बालबालिकाह(रूले आफूसँग भएको अदभूत क्षमतालाई भरपूर प्रयोग गर्ने क्षमता राख्दछन् । हिमरश्मि हाई स्कुलले आफ्नो स्थापना कालदेखि नै सीप सहितको जीवन उपयोगी शिक्षामा विद्यार्थीहरूको रुचि वढाउने धेरै किसिमको गतिविधिहरू सञ्चालन गर्दै आइरहेको छ । त्यसैको निर न्तरताको रुपमा विद्यालयमा हुने विविध साहित्यिक कार्यक्रम पर्दछन् । यस विद्यालयका नेपाली विषय प्रमुख केशरी अम्गाई पनि साहि(त्यमा रुचि सहित कलम चलाउने भएकोले पनि विद्यार्थीहरूमा कथा कविता लागायत अन्य साहित्यिक क्रियाकलापमा बढी लगाव देखिन्छ । 'कल्पलोक' बालकथा सङ्ग्रह यसैको निन्तरता हो । विद्य(ार्थी भाइ बहिनीहरूले कक्षामा आफू पढ्दा, पुस्तकालयमा पढ्का कुराहरू शेयर गर्दा र नेपाली शिक्षकबाट पाएको प्रेरणाले विगत ३ वर्षदेखि आफैले सिर्जना गरी कथा सङ्ग्रह प्रकाशन गर्दै आइरहेका छन् । कथाको यो खण्ड पनि शिक्षकको कुशल नेतृत्व भित्र बालबालिकाका विभिन्न किसिमको बालकथाहरू सङग्रह गरिएका छन् । भविष्यमा बालब(ालिकाहरूले कथाका विभिन्न आयमसँग कुशलता पूर्वक खेल्दै उत्कृठ कथाकार वन्ने अभियानमा लाग्न सकून् र संस्था प्रमुखको हैसियतले हरेक किसिमको सहयोगमा हिमरश्मि हाई स्कुल सदैव लाग्ने प्रण सहित सफलताको कामना गर्दछु ।

# कुलतको परिणाम



**–लोकेश शाही**

नेपालको सुदुरपश्चिमामा पर्ने एउटा सुन्दर र रमाइलो गाउँ थियो । त्यो गाउँको नाम जाडगुडु थियो । त्यहाँका मानिसहरू धरै पढेका थिएनन् । गाउँमा जाने बुझ्केको कोही पनि थिएन । त्यसै गाउँमा कमल आफ्ना बुबाआमासँग बस्थे ।

दिन बित्दै गयो । कमल पनि ठूलो हुँदै गयो । त्यो गाउँमा पढ्नको लागि राम्रो विद्यालय पनि थिएन । त्यसैले उसका आमा बुबाले उसलाई शहर पठाउने निधो गरे । हुन त कमलका आमा बुबा साधारण किसान थिए । उनीहरूको आफ्नो छोरो कमललाई सम्झाई बुझाई शहर पठाए ।

कमल सहर आएर एउटा राम्रो स्कुलमा भर्ना भयो । ऊ भर्खर गाउँबाट आएको थियो । त्यसैले उसलाई शहरको बारेमा केही पनि थाहा थिएन । सुरुसुरुमा उसको पढाइ एकदमै राम्रो थियो । सबै सरहरूले उसलाई स्याबासी दिनुहुन्थ्यो । एकदिन ऊ कक्षामा चाँडै आएर किताब निकालेर पढ्न थालेको थियो । त्यति नै बेला उसको पछाडि आएर रुपेश नाम गरेको केटो बस्यो । रुपेश स्कुलको प्रिन्सिपलको छोरा थियो । धेरै माया ममता र धनको कारणले ऊ बिग्रिसकेको थियो । यो कुरा गाउँबाट आएको कमललाई थाहा थिएन । उनीहरू दुवै जनाको परिचय त अगाडि नै भइसकेको थियो । रुपेशले कमलको काँधमा हात राख्दै भन्यो, “कमल, आज चाँडो भएछ, बाहिर जाऔं न है ।” कमलले साथीको कुरा टार्न सकेन ।

त्यसैले  हुन्छ भन्यो ।

दुवै जना कक्षाबाट निस्केर बाहिरतिर लागे । त्यो दिन रुपेशसँग पैसा थिएन । त्यसैले उसले  कमललाई पैसा माग्यो र लागु पदार्थ किनेर ल्यायो । कमललाई केही थाहा थिएन र सोध्दा पनि सोधेन ।

त्यो पदार्थ लिएर रुपेशले कमलललाई एकान्त ठाउँमा लग्यो र भन्यो, “कमल, तिमीलाई गाँजा भनेको थाहा छ ?”

कमलले टाउको हल्लउँदै नाई भन्यो । “ल, त्यसोभए आज तानेर विचर गरौँ है । क्या आनन्द आउँछ यो तानेपछि ।”

कमलले नाई पनि भनेन र हुन्छ पनि भनेन । फेरि उसले रुपेशको हातमा भएको चुरोट समात्दै सोध्यो, “यो खानेकुरा हो र ?”

“जिन्दगीमा सबै कुराको स्वाद लिनुपर्छ क्या । यदि खान नहुने भए किन बनाइन्थ्यो त ? यो त रमाइलोको लागि तान्ने हो । एक सर्को तानेर त हेर ।” रुपेशले भन्यो ।

कमलले  मुखमा राखेर एकचोटि के तानेको थियो ऊ त खोक्दै ठाउँको ठाउँमा ढल्यो । केही बेरमा होस आएपछि रुपेशले उसलाई आफ्नो घरमा लग्यो र बेलुका उसका कोठामा पुऱ्याइदियो ।

भोलिपल्ट विद्यालय जाँदापनि ऊ फ्रेस हुन सकेको थिएन । शिक्षकले कारण सोध्दा उसले टाउको दुखेको बहाना बनायो । रुपेश भने विद्यालय आएको थिएन । त्यसैले कमललाई छटपटी भयो । यो सबै क्रियाकलाप शिक्षकले हेरिराख्नु भएको थियो । कमलले पानी खान जान्छु भन्यो । शिक्षकले पठाउनुभयो र शिक्षक पनि पछि पछि जानुभयो । कमल भने पानी खान नगएर हिजो रुपेशले लगेको ठाउँमा नै गयो । त्यहाँ उसले रुपेश लगायत अन्य साथीलाई पनि देख्यो । सरासर गएर रुपेशको हातको चुरोट समातेर तान्न थाल्यो । यो सबै क्रियाकलाप शिक्षकले मोवाईलबाट खिचिरहनु भएको थियो ।

त्यसको पछिल्लो दिन कमल अलि ढिलो आयो । शिक्षकले सोध्दा टाउको दुःखेको बहाना बनायो । तर शिक्षकलाई भने सबै



थाहा थियो । उहाँले केरकार गर्नुभयो । उसले अन्त्यमा भएको सबै कुरा भन्यो । उसले शिक्षकलाई भन्यो, “मलाई थाहा नभएर हो । अबबाट कहिल्यै त्यस्तो खादिँन ।”

दिन बित्दै गयो । रुपेश विद्यालय नआएको पनि एकहप्ता भइसकेको थियो । यो कुराले गर्दा कमललाई एक्लो भए जस्तो महसुस भयो । कमलसँगै पैसाको पनि समस्या थियो । उसले बुबालाई फोन गरेर पैसा मगायो ।

बुबाले भने, “बाबु, अहिले हामीसँग पैसा छैन । त्यसैले दुई चार दिन पर्ख है ।” छोराको कानमा के यो शब्द परेको थियो उसले बुवालाई नमिठो शब्दले के के भन्यो उसलाई पत्तो नै भएन किनकी उसलाई हिजोको गाँजाको ह्याङले अझै छोडेको थिएन । छोरोको बानी बिग्रिएको कुरा गाउँका सोझा बाआमालाई के थाहा ? केही दिन पछि पैसा पठाइदिनु भयो ।

बुबाले पठाइदिएको पैसाले कमल भने मोज मस्ती साथ साथै लागुपदार्थ किनेर खाने काम गर्दथ्यो । एकहप्ता भइसकेको थियो कमल विद्यालय नगएको । त्यसैले शिक्षकले कमलका बाआमालाई फोन गरेर सबै कुरा बताइदिए । उसका बुबा तुरुन्तै सहर आए । छोराको यस्तो क्रियाकलाप देखेर उनी रुन थाले । भोलिपल्ट कमलका बुबाले उसलाई विद्यालय लिएर गए र शिक्षकलाई राम्रो हेरचाह गरि दिनु होला भनेर आग्रह गर्दै उसलाई होस्टेलमा राखिदिए । त्यस दिनपछि भने कमलले आफ्नो पढाइलाई निरन्तरता दिन थाल्यो र कक्षामा प्रथम हुँदै गयो । अन्त्यमा पढाई सकेर ऊ आफ्नो गाउँ फर्कियो ।



# चन्द्रमुखी वनको रहस्य




**–साइनासिं डङ्गोल**

कुनै समय नेपालमा लालनगर नाम गरेको गाउँ थियो। त्यो गाउँ सुन्दर र वनजङ्गलले भरिएको थियो । मानिसहरूले त्यो वनलाई चन्द्रमुखी वन भन्दथे। त्यो जङ्गलको आसपासमा कुनै मानव बस्ती थिएन। मानिसको बस्ती त्यो जङ्गलभन्दा तीन किलोमिटर पर थियो । त्यो बस्तीको नाम सूर्य नगर थियो। त्यस गाउँमा बस्ने एक परिवारमा एक दम्पती र उनीहरूका दुई छोरा छोरी थिए । बुबाको नाम हिरालाल, आमा सीता माया, छोराको हरि र छोरीको नाम रिया थियो। गर्मीको मौसम थियो । एक दिनको कुरा हो, बेलुका बुबा र उसका दुईवटा छोरा छोरी आँगनमा बसेर साँझको चिसो हावा खाईरहेका थिए । छोरीले बुबासँग प्रश्न सोधी, “ बुबा, ऊ त्यो परको जङ्गललाई किन मानिसहरूले चन्द्रमुखी वन भनेका ?”

छोरीले सोधेको प्रश्नको जवाफ दिदै हिरालालले भने, “छोरी, त्यो वनमा चन्द्रमुखी नाम गरेको भूतको बसोबास छ भनेर मान्छन् मान्छेहरू । त्यही डरले मान्छेहरू पनि त्यहाँ नगएका हुन् ।”

हिरालालको घरको बाटो हुँदै त्यही गाउँको एक बुढो मान्छे आइपुगे। हिरालालको चन्द्रमुखी वनको कुरा सुनेर उनले पनि भन्न थाले, “हेर नानी बाबु हो, त्यो वनमा त खुट्टा र हातका लामा लामा नङ पालेको, आँखा ठूला र राता, पहेँला दाँत, कालो वर्णको भूत छ रे। त्यो भूत राति राति छिटो हिँड हामी धेरै ठाउँमा जानुपर्ने छ भन्दै एक्लै कराउँछ रे। नानी बाबु तिमीहरू सतर्क भएर बस्नु है।” यसो भन्दै ती बुढो मान्छे आफ्नो बाटो लागे।



दुवै छोरा छोरी डराउँदै बुबाको नजिक सरे र भने, “अँ बुबा, त्यो वनको बाटो पनि ढुङ्गाले बनेको सिँडी पो छ रे तर कोही पनि हिड्दैनन् रे ।”

त्यतिकैमा आमाले भित्रबाट भन्नुभयो, “खाना पाकिसक्यो, खाना खान आउनुहोस् ।” सबैजना खाना खाएर सुत्नतिर लागे । तर रियाको मनमा चाहीँ त्यही चन्द्रमुखी वनको मात्र झलक आइरहेको थियो । रियाले रातमा त्यहाँ यसको रहस्य पत्ता लगाउने विचार गरी । भोलिपल्ट उसले आफ्नो मिल्ने साथी अनुशालाई सबै कुरा बताई र सहयोगको लागि अनुरोध गरी ।

“आबुई ! रातमा त्यस्तो ठाउँमा जाने ?” अनुशाले डराउँदै भनी ।

“तँ किन डराएकी ? तँ जस्तो साहसी पनि यसरी डराउन मिल्छ र ? केही हुँदैन क्या ।” उसले आश्वस्त पार्न खोजी । रातको समयमा उनीहरू वनमा पुगे । उनीहरू दुवै चनाखो भएर हेरिरहे । रियाले अनुशालाई कोट्याउदै भनी, “ओहो ! हेर त, को हो त्यहाँ ?”

“हो, ती केटाहरू त डाकुहरू जस्ता छन् ।” अनुशाले भनी । उनीहरू आँखा पनि नझिम्काई हेर्न थाले । डाकुहरूले चोरेको सामानहरू त्यही चन्द्रमुखी वनमा लुकाएर राखेका रहेछन् । रिया र अनुशाले अनौठा सामानहरू थुपारिएको देखे । यो घटनालाई उनीहरूले पुलिसलाई बताए । त्यसपछि पुलिसले त्यो चन्द्रमुखी वनको रहस्य सबै पत्ता लगाएर गाउँलेहरूलाई पनि सबै बताए । लालनगर गाउँलाई अहिले चन्द्रमुखी गाउँ पनि भनिन्छ अनि रिया र अनुशालाई साहसी केटीका रुपमा सबैले सम्मान गर्न थालेका छन् ।



# जनावरको चाहना



**–प्रविण मुडभरी**

कुनै समयमा नेपालको उत्तर भूभागमा घना जङ्गल थियो । त्यस जङ्गलमा स्याल, खरायो, बाघ, सिंह हात्ती लगायत अरु जनावरहरूको बस्ती थियो । जङ्गल घट्दो क्रममा थियो किनकी मानिसहरू बस्ती बसाउन, खेती गर्ने जमिन आदि बढाउन तत्पर देखिन्थे ।

एक दिनको कुरा हो, साँझको समय थियो मौसम निकै आन्दोलित थियो । गड्याङगुड्ड र चड्कनेको मात्र बढ्दो त थियो नै, पानी पनि निकै आक्रमक गतिले परिरहेको थियो । जङ्गलमा कुनै पनि जनावर निदाउन सकेका थिएनन् । यस्तैमा स्याल हँस्याङ फस्याङ गर्दै सिंहकोमा पुग्यो र भन्न थाल्यो, "महाराज, महाराज ! निकै भयानक खतरा आएको छ, लौन के गर्ने होला ?"

"हँ, के भन्छ यो ? के खतरा आयो र यति आत्तिएको छस् ? छिटो भन मित्र, म सुन्न तत्पर छु ।" सिंहले भन्यो ।

स्यालले भन्यो, "महाराज, म जङ्गलको बाहिर मानिसहरूको बस्ती नजिक गएको थिएँ । त्यहाँ मानिसहरू भेला भएका रहेछन् । मैले झाडीमा लुकेर उनीहरूको कुरा सुने ।"

"अँ । अरु... ।" सिंहले जिज्ञासा देखायो ।

सुक्क सुक्क गर्दै स्यालले मलिन स्वरमा भन्यो, "अब यो जङ्गलमा ठुलो विमानस्थल बनाउने अरे । हाम्रो यो जङ्गल सिवाय अरु कुनै बासस्थल पनि त छैन । कहाँ जाने ? के गर्ने ?" स्यालको स्वर सुकेको थियो ।



महाराज सिंह गम्भिर भए । आफू जङ्गलको राजा भएको नाताले आफ्नो जङ्गलको हरेक प्राणीलाई यस्तो जोखिमबाट मुक्ति दिलाउनु उनको दायित्व थियो । "जाऊ अब सुत । पानी परिरहेको छ ।" सिंहले भन्यो । "भोलि सबेरै जङ्गलका हरेकलाई मेरो ओडारमा जम्मा हुन आदेश दिनु सबैको सल्लाह बमोजिम म निर्णय लिनेछु ।"

सिंहको आदेशपछि स्याल 'हस् महाराज ।' भन्दै आफ्नो वासस्थानतर्फ लाग्यो । सबेरै सिंहको आदेश अनुसार जङ्गलका हरेक सदस्यहरू ओडार नजिक जम्मा भए । केही समयमा सिंह आफ्नो ओडारबाट बाहिरियो र भन्न थाल्यो, "मित्रहरू, विषय दुःखलाग्दो छ र रिस उठ्दो पनि । मनिसहरू यस जङ्गल नष्ट गरेर विमानस्थल बनाउँदै छन् अरे । यसबारे तपाईहरू के कस्तो विचारहरू राख्न चाहनु हुन्छ ?"

चितुवा यस्तो खबर सुन्ने बित्तिकै मुर्मुरियो, "के हाम्रो वासस्थानलाई विमानस्थल बनाउने तिनीहरूले ? तिनीहरूको त मैंले ....।" बिचमा बोल्दै कमिला करायो, "कति निर्दयी छन् मानिसहरू । के जङ्गलमा हाम्रो कुनै अधिकार छैन ? के हाम्रो अस्तित्व छैन र ?"

हात्ती पनि बेस्सरी कराउँदै भन्न थाल्यो, "सबैभन्दा विवेकी जीवको रुपमा मानिसहरूलाई लिइन्छ । तर हाम्रोजति पनि विवेक यिनीहरूको रहेनछ । आखिरमा हाम्रो अस्तित्व नरहनु भनेको यिनीहरूको पनि अस्तित्व नरहनु हो ।"

हात्तीको कुरामा सबैले समर्थन जनाए । "अब यस्तो अविवेकी निर्दयी, जसको कुनै मानवता नै छैन, जो आफ्नो मात्रै भलो सोच्छ, यस्ता मानिसहरूलाई कस्तो सजायको भागिदार बनाउन चाहनुहुन्छ ?" सिंहले गर्जिदै भने ।

"आफ्नो भौतिक सुविधाका निमित्त हामी जस्ता प्राणिहरूको बासस्थानमा जे मनलाग्यो त्यही गर्ने ? यस्ता मानिसहरूको अत्याचार सहेर बस्नुभन्दा यिनीहरूलाई नै सल्काउनुपर्छ । न रहन्छ बाँस, न बज्दछ बाँसुरी । " बाँदरले बदलाको भावमा भन्यो ।

साँच्चै मानिसहरू आफ्नो हदभन्दा पनि माथि गएका थिए । उनीहरूकै कारण कैयौँ प्राणीको अस्थित्व गुमेको थियो । बाँचेका जनावरहरूलाई पनि मानिसहरूले यो वा त्यो नाममा अफ्ठेरोमा पार्दै थिए ।

"हामी चुप लागेर, हात बाँधेर केही हुँदैन साथीहरू, अब हामी उठ्नै पर्छ । मानिसहरूको यो थिचोमिचो कति सहने ?" गैँडाले बुरुक्क उफ्रदै भन्यो । "चाँडो भन्दा चाँडो केही गर्नै पर्छ महराज । म साथी गैँडाको कुरामा समर्थन जनाउँछु । तर बुद्धि पुऱ्याएर मात्र । हामी पनि तिनीहरू जस्तै बन्छौँ भने हामी र ती भौतिकवादी मानिसहरू बिच के अन्तर रहन्छ र ?" बुद्धिमान खरायोले राय व्यक्त गऱ्यो ।

लामो शुन्यतापछि अर्नाले मुख खोल्यो, "त्यसो भए यिनीहरूलाई फर्कन नसक्ने गरी यहाँबाट निकै टाढो भगाऔँ ।"

अर्नाको कुरामा सबैले सहमति जनाए । महराज सिंहको निर्देशन अनुसार त्यसको भोलिपल्ट नै सबै जनावर एक जुट भएर मानिसलाई भगाए । मानिसहरू कराउँदै, चिच्याउँदै भाग्न थाले । आखिर मानिसहरूलाई निकै टाढा पुऱ्याएर उनीहरू जङ्गल फर्के । मानिसहरू फेरि आउँने प्रयत्न गरे तर जनावरहरूले फेरि खेदे । त्यसपछि त्यहाँ मानिसले कहिल्यै पाइला टेक्ने प्रयत्न गरेनन् । मानिसहरूले पनि आफूले गरेको स्वार्थपूर्ण कामहरू सम्झे । उनीहरूले मनमनै सोचे, 'आखिर जस्तो गऱ्यो त्यस्तै भोग्ने हो, पहिले नै त्यस्तो अविवेकी काम र सोचहरू नबनाएको भए यस्तो हुँदैन थियो ।'



# दृढ संघर्ष




–नम्रता थापा

निद्रामा पनि नतासा मुसुमुसु हाँस्दै आफ्नो सपनामा हराएकी थिई । ऊ आफू विद्यालयमा नाचेको सपना देखिरहेकी थिई । 'टिन टिन' ४:३० बजेको घण्टी बजेपछि आनन्दसँग सुतेकी नतासा बिउँझिई र सिरक हटाएर उठी ।

नतासा एक अनुशासित विद्यार्थी थिई । ऊ पढाइमा पनि अब्बल थिई । कोही नाचेको देखेपछि ऊ त्यही हराउँथी । उसको मुहारमा छुट्टै खुशी आउँथ्यो । उसले मनमनै भनी, 'आहा ! आज त विद्यालयमा नाच हुन्छ कि क्या हो ?' ऊ उठेर पढ्न लाग्दा पनि त्यही सोचिरहेकी थिई । ऊ छिटो छिटो विद्यालय जान तयार भई । विद्यालय पुग्ने बित्तिकै राति देखेको सपना साथीहरूलाई सुनाई । नतासाको कुरा सुनेपछि उसका साथीहरू केहीबेर 'यस्तो पनि हुन्छ ?' भनेर हाँसे । तर नतासा भने आफूले राति देखेको सपना बारे सोचमग्न भई बसेकी थिई ।

बिहान देखेको सपना साँचो हुन्छ भने जस्तै भयो । नतासाको विद्यालयमा एक प्रतियोगिताको लागि विद्यार्थी छान्न नृत्य सिकाउने गुरु आउनुभयो । नतासा धेरै खुशी भई र आफ्ना साथीहरूलाई भनी, "देख्यौ, मेरो सपना पूरा भयो कि भएन ।"

"ल ल, पत्याएम् ।" साथीहरूले भने ।

एकछिन पछि नतासा नृत्यमा भाग लिन गई । नृत्य शिक्षकले

सामुहिक नृत्यका लागि नतासालाई पनि छान्नुभयो । आफू छनोटमा परेकामा नतासाको भुईंमा खुट्टा थिएन । उनीहरूको १२ जनाको समूह बन्यो । जसरी पनि जित्नुपर्छ भनेर उनीहरू निकै मिहिनेत गरेर नृत्य सिक्न थाले । दुई हप्तापछि उनीहरूको प्रतियोगिता भयो । उनीहरूको मिहिनेत र सिपले गर्दा उनीहरू प्रथम भए । नतासा ज्यादै खुशी थिई । त्यस दिन जब नतासाको हातमा त्यो प्रमाणपत्र पऱ्यो उसले मनमनै सोची, 'एक दिन म नेपाललाई चिनाउने गरी नृत्य प्रतियोगितामा प्रथम हुनेछु ।'

विष नभएको सर्प र इख नभएको मानिस केही काम लाग्दैन भन्ने भनाइबाट प्रेरित भएर आफ्नो सपना साकार पार्न ऊ इख बोकेर मिहिनेत गर्न थाली । सात महिनापछि नतासाले कक्षा १० पास गरी नृत्य प्रशिक्षण लिन थाली । ऊ दिनरात मिहिनेत गर्न थाली । यदि कुनै काम गर्दा पूरा हिम्मत र लगनशीलता साथ गर्ने हो भने देवता पनि झुक्छन् भनिन्छ । नतासाले दिन रात नभनी मिहिनेत गरिरही ।

आखिर विश्व नृत्य प्रतियोगिताको फर्म पनि खुल्यो । नतासाको लागि यो ठूलो अवसर थियो । उसले फर्म भर्ने निर्णय गरी । नतासको यो निर्णयमा उसका साथीहरू र परिवारले साथ र हौसला दिए । त्यसपछि ऊ झनै आफ्नो सपना पूरा गर्न दिनरात मिहिनेत गर्न थाली । नतासा आफ्नो नृत्यमा के कमजोरी छ र कमजोरलाई कसरी सुधार्न सकिन्छ भनेर प्रयास गर्न थाली । दुई महिनापछि



प्रतियोगिता थियो । उसले त्यो दुई महिना निकै अभ्यास गरी । उसको लागि त्यो दुई महिना दुई दिन जसरी बित्यो । दुई महिना सकिएपछि आफ्नो मातृभूमिको माटो थैलोमा राखेर परिवारको आशीर्वाद पोल्टामा थापेर प्रतियोगिताको लागि अर्को देशमा प्रवेश गरी ।



उसले त्यहाँ गएर सबै चरणहरूलाई पार गरी र सबै प्रतिद्वन्दीहरूलाई पछार्दै आफ्नो नाम फाइनलमा लेखाउन सफल भई । आखिर उसको सपना पूरा हुने दिन आइपुग्यो । एक मनले एकदमै डराइरहेकी थिई र अर्को मनले 'म जित्छु' भन्दै आफूलाई सम्झाई रहेकी थिई ।

उसको नाम मञ्चमा बोलाइयो । ऊ मञ्चको सिँढीलाई ढोगेर मञ्चमा उक्ली । नृत्य प्रदर्शन गर्न तयार भइ तर सायद त्यो दिन भाग्यको डोरी उसको हातमा थिएन । सायद उसको मनको डर उसको नृत्यमा हाबी भयो र ऊ अचानक नृत्य गर्दागर्दै चिप्लेर लडी । त्यो देखेर मानिसहरू हाँस्न थाले । नतास त्यहाँबाट भागी र आफ्नो ड्रेसिङ रुममा पुगेर रुन थाली ।

ऊ आफ्नो देश फर्किई । उसलाई लागेको थियो- सायद त्यो प्रतियोगितामा भएको घटना उसका आफन्त, छरछिमेक र साथीहरूले बुझ्नेछन् । तर त्यस्तो भएन । जब ऊ घर फर्की सब उसको नृत्यको खिल्ली उडाइरहेका थिए । त्यो सब घटनाबाट नतासा हतास भई र एकान्त मन पराउने हुन थाली । यो सब देखेर नतासाको आमा बाबु एकदमै दु:खी थिए । त्यसैले उसको हालतमा अलि सुधार हुन्छ कि

भनेर उनीहरूले उसलाई सुधारकेन्द्रमा राखिदिने निर्णय गरे ।

आठ महिना सुधारकेन्द्रमा बसेर ऊ घर फर्की। आठ महिनामा उसको बानीमा धेरै फरक आएको थियो । त्यहाँ उसका गुरुहरूले दिएको प्रेरणाबाट उसले फेरि विश्व नृत्य प्रतियोगितामा जाने विचार गरेर फर्केकी थिई ।

उसले अब पहिलेको भन्दा धेरै मिहिनेत गरी र फेरि त्यो गल्ती नदोहोरियोस् भनेर आफूलाई भित्रैबाट निकै बलियो बनाई । पहिले झै यो पालि पनि अन्तिम चरणमा पुगी र सक्दो जोडले नृत्य प्रदर्शन गरी । उसलाई यस कुरामा आत्मसन्तुष्टि मिलेको थियो कि उसले यसपालि पहिलाको जस्तो गल्ती दोहोऱ्याइन ।

परिणाम सुनाउन सबैलाई मञ्चमा बोलाइयो । उसलाई एक मनबाट जितिन्छ जस्तो लागेको थियो । अर्को मनबाट जित्दिन । तर यस पालि उसको मिहिनतले आफ्नो रङ देखायो  उसले त्यो प्रतियोगिता जिती उसको लागि त्यो अविस्मरणीय क्षण भयो ।

जब उसले त्यो प्रतियोगिता जिती तब सबैले उसलाई एउटा प्रेरणाकी स्रोतको रुपमा लिन थाले । किनकी जुन केटीले एकचोटी त्यही प्रतियोगितामा लज्जित भएर जानु परेको थियो, त्यही केटीको अठोट, मिहिनेत र हार नमानी गरेको दृढ विश्वासले गर्दा उसले जितेकी थिई ।



# पब्जीको करामत




–अभिलेख आचार्य

'आयो, आयो हान, हान..' जस्ता शब्दहरू हरिबहादुरको कोठाबाट सुनिरहेन आवाज हो । हरि बहादुर कक्षा १० मा पढ्दै गरेको लगनशील र मिहिनेती विद्यार्थी हो । उसका बुवाआमा विदेशमा काम गर्नुहुन्थ्यो । तसर्थ उसलाई मामाघरमा राखिदिनु भएको थियो । जसरी मामाघर सबै बच्चाहरूको मायाको थलो हुन्छ त्यसैगरी हरिबहादुर पनि मामाघरमा मायाको पात्र थियो । ऊ मामा घर मा एक किसिमले राजा नै थियो । ऊ कसैले भनेको पनि मान्दैनथ्यो । भान्जाले आमाबुबासँग कुरा गर्न सजिलो होस् भनेर मामाले घरमा इन्टरनेट पनि जडान गरिदिनु भएको थियो ।

उसले कक्षामा साथीहरूले गरेको पब्जीको बयान सुनिरहेको थियो । उसलाई पनि पब्जीको बारेमा बुझ्न मन लाग्यो । साथीहरूको सहयोगमा उसले कम्प्युटरमा पब्जी खेल्ने वातावरण मिलायो । उसलाई यो खेल निकै रमाइलो लाग्यो । उसले यो खेल खेल्न थालेपछि समय बितेको चाल पाउनै सकेन । ऊ रातको बाह्र एक बजेसम्म खेल्न थाल्यो ।

उसले पब्जी धेरै नै खेल्न थाल्यो । रातमा पनि धेरै खेलेर सुत्ने सयम पाएन । ऊ सुन्निएका आँखाका डिल लिएर विद्यालय जान्थ्यो । एकपटक बुवासँग कुरा गर्ने क्रममा उहाँले सोध्नु पनि भयो, "बाबु तिम्रा आँखाका डिल त सुन्निएका छन् नि, किन हो ?"



"हो बुवा, आजभोलि म अलि बढी पढ्ने हुँदा मेरा आँखा सुन्निएका होलान् ।" उसले सरासर झुटो बोल्यो ।

बिस्तारै ऊ पब्जीमा नै एकाहोरिन थाल्यो । ऊ मामाघरमा पनि त्यति राम्रोसँग घुल्न सकेन । ऊ राम्रोसँग बोल्दैनथ्यो । उसका आँखाका देख्ने शक्ति पनि कम हुँदै गयो । उसको प्रथम परीक्षा पनि नजिकिँदै थियो तर परीक्षाको कुनै पनि चिन्ता नलिई ऊ पब्जी खेल्थ्यो । उसको परीक्षा पनि आयो । आजसम्म असफलताको स्वाद नचाखेको हरिबहादुर यसपालि नमज्जासँग फेल भयो । उसलाई पाँच विषय लागेको रहेछ ।

उसले बिस्तारै पब्जी खेल्ने समय बढाउँदै गयो । एकपटकको कुरा हो । उसको विद्यालयमा दशैंको विदा थियो । उसका बाबु आमा नेपाल फर्कने तरखरमा हुनुहुन्थ्यो । पछि पब्जी खेल्न पाइदैन कि भन्ने त्रासले उसले रातभरि पब्जी खेल्ने निधो गऱ्यो । खाना खाएर आएपछि उसले खेल्न सुरु गऱ्यो । उसले खेल्दा करिब बिहान २:३० बजेछ । एक महिनादेखि राम्रो निद्रा नसुतेको र खाना पनि थोरै मात्रामा खाएको हुँदा उसको टाउको दुखिरहेको थियो । ऊ जहिले पनि पब्जी खेल्ने समय बचाउन अलिकति खाएर आफ्नो कोठातर्फ कुदिहाल्ने गरेको थियो । कमजोरी कै कारण ऊ बेहोस भयो । उसका मामालाई यसको बारेमा पत्तो नै थिएन ।

बिहान भएपछि उसको मामा कोठामा जाँदा ऊ बेहोस अवस्थामा भेटियो । मामाले उसलाई अस्पताल पुऱ्यानुभयो । उसलाई होस आउन निकै बेर लाग्यो । ऊ होसमा आउँदा उसको वरिपरि मामा, आमा र बुवा हुनुहुन्थ्यो । उसलाई सलाइन चढाइएको थियो । उसका आमाबुवाका आँखा रसाएको देखर उसले आफ्नो आँसु थाम्न

सकेन । उसलाई आमाले फलफूल काटेर दिनुभयो ।

त्यसपछि उसका बुवा उसको नजिक आएर सोध्नुभयो, "बाबु, तिमीलाई के भयो ?"

"मलाई माफ गर्नुहोस् ।" पश्चतापका आँशु खसाल्दै उसले सारा सत्य बतायो । उसको बुवाले सबै कुरा बुझ्नुभयो । उसलाई केही घण्टापछि आराम गर्ने सुझावका साथ अस्पतालबाट डिस्चार्ज गरियो ।

उसलाई आराम भएपछि उसका बुवाले उसलाई मनोवैज्ञानिक परामर्स कहाँ लग्नुभयो । करिब दुई हप्ता लगातार परामर्श लिएपछि उसले आफूलाई पूरै परिवर्तन गऱ्यो । पुरानै हरिबहादुरलाई देखेर उसका बुवा आमा खुसी हुनुभयो ।

प्रथम त उसले कम्प्युटरबाट गेम डिलेट गऱ्यो । उसका धेरै पाठ छुटिएका थिए । उसले छुटेका पाठहरू साथीहरूको सहयोगमा पूरा गऱ्यो । उसले अझ मिहिनेत गर्न थाल्यो । उसको लगनशीलताले उसलाई फल पनि प्राप्त गरायो । उसले एस.ई ई.मा ३.९० जि.पि.ए ल्याएर जिल्लामा सर्वोत्कृष्ट विद्यार्थी सावित भयो । अहिले ऊ आफ्नो अतितबाट पाठ सिकेर वर्तमानमा रमाउन थालेको छ भनेर उसका बुबाले भेट्दा कुरा गर्नु भएको थियो ।



# प्यारासुट यात्रा




**–आर्यस रिजाल**

"बाबु रमन, भन त, हामी हवाइ जहाजबाट स्काई डाइभ गर्दा प्यारासुट किन लगाउँछौ ?" कक्षामा पढाइ रहनु भएको सरले रमनलाई सोध्नुभयो ।

"सर, हामी स्काई डाइभ गर्दा प्यारासुट खुल्छ अनि विस्तार हुन्छ । प्यारासुटको ठूलो ठूलो क्षेत्र हुन्छ जसको कारण प्यारासुटमा हावाको प्रतिरोध धेरै हुन्छ र हामी प्यारासुटको सहयोगले विस्तारै मात्र नभएर सुरक्षितपूर्वक जमीनमा ओर्लन्छौँ ।" रमनले जुरुक्क उठेर जवाफ दियो ।

रमनको उत्तर सुनेर सरले फेरि भन्नुभयो, "स्याबास ! तिमी ठ्याक्कै सही जवाफ दियौ । तर तिमीलाई यो सबै कुराहरू कसले सिकायो त रमन ?"

"सर, मेरो बाबा स्काई डाइभ गर्ने हवाइजहाजको पाइलट हुनुहुन्छ । बाबाले मलाई स्काई डाइभको बारेमा सबै भन्नुभएको ।" रमनले गर्व गर्दै भन्यो । 'टिङ, टिङ, टिङ, टिङ' लौ घन्टी पनि लागेछ । 'अब बाँकी भोलि पढौँला है' भनेर सर जानुभयो ।

सबै साथी खाजा खान थाल्छन् तर रमन भने आफ्नै बाबा पाइलट भएपनि आफूले कहिल्यै स्काई डाइभ गर्न नपाएको गुनासो

मनमनै गर्छ । "रमन किन टोलाएको ? जाऔँ खाना खान, अहिले फेरि घन्टी लाग्ला ।" उसँगै बस्ने दिपेन्द्रले रमनलाई भन्यो ।

"हुन्छ, छिटो जाऔँ ।" भन्दै रमन र दिपेन्द्र क्यान्टिनतिर लागे । "ला दिपेन्द्र, मैले त घरबाट खाना खाने पैसा ल्याउन भुसुक्कै बिर्सेछु । अब के गर्ने होला ?" रमनले निराश हुँदै भन्यो ।

"ह्या, के अध्याँरो मुख बनाएको होला । म छदै छु नि । मेरो खाजा दुबै जना मिलेर खाए भइहाल्यो नि ।" रमनको काँध माथि हात राख्दै दिपेन्द्रले भन्यो ।

"भो भो, तिमी खाजा खाएर आऊ । म कक्षामा जान्छु ।" भनेर रमन कक्षातिर डौडियो । कक्षामा पुग्नासाथ रमनले आफ्नो डेक्समा बसेर प्यारासुट यात्राको बारेमा सोच्न थाल्यो । उसले एक्कासी आफूलाई जहाजमा सुतिरहको पाउँछ । उसलाई अचम्मा लाग्छ । यता उता हेर्दा उसले छेउमा बाबा, अगाडि पछाडि उसको बाबाको साथीहरू लगायत धेरै पर्यटकहरू थिए । ऊ छक्क परेर बस्यो ।

केहीबेरमा सबै पर्यटकहरू उठे । रमनको बाबा र बाबाको साथीहरू पनि उठे र प्यारासुट यात्रा गर्न आएका प्याराटोपरहरूलाई व्याग भिराएर रेडी बनाउन थाले । रेडी भएका प्याराटोपरहरू भने हवाजहजबाट हाम्फाल्न ढोका छेऊ गए ।



रमनलाई प्यारासुट यात्रा रोचक लाग्यो । "म पनि स्काई डाइभ गर्छु ।" भन्दै ऊ बाबा छेऊ गयो ।

“तिमी सानै छौ । अहिले स्काइ डाइभ गर्न हुँदैन । बरु झ्यालबाट हेर ।” बाबाले प्यारटोपरलाई व्याग भिराइ आफूले पनि भिर्दै भन्नु भयो । तर रमनले मानेन । छेऊमा राखेको व्याग भिरेर रमन स्काइ डाइभ गर्न लाइनमा बस्यो ।

“यो केटो पनि अचम्मकै छ ।” भन्दै बाबाले उसको व्याग झिकेर राखिदिनु भयो । रमन उदास हुँदै सिटमा बसेर रुन थाल्यो । त्यो देखेर उहाँले रमनलाई पनि प्यासुट यात्रामा लाने निर्णय गर्नुभयो ।

उहाँले कपबोडबाट ड्रेस झिकेर रमनलाई लगाई दिनुभयो र आफूले पनि अर्को ब्याग बोक्नु भयो । त्यसपछि रमनलाई आफ्नै व्यागमा बेल्टले बाँध्नुभयो । सबै तयारी पूरा भएपछि रमनको बाबा हवाइजहाजबाट हाम्फाल्नुभयो । सुरुवातमा रमनलाई सिरीङ्ग हुन्छ तर केही समयमा नै रमनलाई आनन्द आउँछ । अलि तल पुगेपछि रमनको बाले ब्यागमा जोडेको बटन दबानुभयो । बटम दबाएपछि प्यारासुट खुल्यो । उनीहरू अब विस्तारै र वरिपरिको दृश्य हेर्दै तलतिर ओर्लन थाले ।

रमनलाई पहाड, मसिना मसिना घरहरू, जङ्गलहरू हेरेर आनन्द आयो तर उसले कतैबाट स्कुलमा बज्ने जस्तै घण्टी बजेको सुन्यो । घण्टी बजेको सुनेर उसले आफ्नो स्कुल सम्झियो र अब भोलि स्कुलमा प्यारासुटको बारे अझै बढी भन्छु भनेर सोच्न थाल्यो ।

सोच्दै जाँदा उसलाई अचानक कसैले चलाएको र बोलाएको जस्तो लाग्यो । ऊ झल्यास्स ब्युँझियो । दिपेन्द्रले उसलाई बोलाउँदै थियो, “टिफिन टाइमको समाप्त घण्टी बजिसक्यो, तिमी भने अझै सुत्दै छौ ।”



# फेरिएकी सरीना




**–भावना अधिकारी**

"नानी, नानी, छिटो उठ । स्कुल जान ढिलो भइसक्यो ।" यति भनेर आमा घरको काममा लाग्नुभयो ।

सरिना आमाको आवाज सुन्नासाथ आँखा मिच्दै उठी, मुख धोएर हतार हतार स्कुलको ड्रेस लगाई र चिया नास्ता गर्न भान्सामा पुगी । आमाले उसलाई, "कक्षा १० मा पुगेकी केटीको चाल यस्तो छ । हे भगवान, यसले के गरेर खाली ?" भनेर गाली गर्दै चिया दिनुभयो । तर सरिना भने यो कुरालाई सुने पनि नसुने झैं गरेर चिया पिएर स्कुल हिडी ।

गलत सङ्गतमा परेर पनि होला, सरिना पढाइमा ध्यान दिन्नथी र आफ्नो गृहकार्य गर्न पनि अल्छी गर्थी । साथीहरूसँग रल्लिदै पनि हिड्थी । सरिनाको यस्तो बानी व्यहोरा देखेर उसको आमाबुबाको मन साहै दुख्थ्यो । जब उसको आमाबुबाले उसलाई पढ भनेर सम्झाउन खोज्थे तब सरिना "ह्या ! कति किचकिच गर्नु भएको । पढिहाल्छु नि ।" भनेर ठाडो जवाफ फर्काउने गर्थी ।

सरिना कहिले पनि आफ्नो बुबाआमाले भनेको कुरा मान्दिनथी । उसले कहिले पनि आफ्नो आमा बुबाको दुःख पीडा, समय र शिक्षाको महत्वलाई बुझ्न सकिन । जसको कारण उसले कहिले पनि परीक्षामा राम्रो अङ्क ल्याउँदिनथी ।

सरिताको आमा बुबाले सरितालाई धौ धौ गरेर भए पनि बोर्डिङ स्कुलमा पढाउनु भएको थियो । सरिताको स्कुलमा हरेक हप्ता

विद्यार्थीको सकारात्मक सोच बढाउनका लागि विभिन्न कार्यक्रमहरू सञ्चालन हुने गर्थ्यो । यस्तै कार्यक्रमहरू सञ्चालन गर्ने क्रममा विद्यालयले हरिराम अधिकारी नामक एक व्यक्तिलाई उत्प्रेरणात्मक तालिम दिन बोलायो ।

विद्यालयले उनलाई बोलाउनुको मुख्य उद्देश्य भनेको आफ्ना विद्यालयको पढाई प्रतिको नकरात्मक सोचलाई हटाउनु थियो । हरिराम अधिकारीले हरेक कक्षामा विद्यार्थीलाई आफूसँग भएको ज्ञान बाँडे । उनले कक्षा १० का विद्यार्थीहरूलाई विशेष शिक्षा दिने योजना बनाएका थिए । किनभने कक्षा १० का विद्यार्थीले एस.इ.ई. तयारी गर्दै थिए ।

उनले विद्यार्थीहरूलाई राम्रो र नराम्रो सङ्गतको फल, हाम्रो जीवनमा आमा बुबाले खेल्नु भएको भूमिका, शिक्षकको भूमिकाको बारे पनि बताए । हरिराम अधिकारीको कुराले सरिताको आँखा खोलिदियो । उसले आफ्नो आमा बुबाप्रतिको गलत व्यवहारलाई अनुभव गरी र त्यो कुरामा ऊ पछुतो मानी ।

त्यो दिन जब स्कुल छुट्टी भयो, तब ऊ दौडिदै आफ्नो घर गई र आमालाई अँगालो हाल्दै भनी, “आमा, मलाई माफ गरिदिनु होस् । मैले तपाईहरूलाई धेरै दुःख दिएकी रहेछु तर अबबाट म यो गल्ती दोहोर्‍याउने छैन ।” आँखाभरि आँसु पारेर सरिना रोएको देखेर आमा छक्क पर्नुभयो ।

‘हैन, आज यो केटीलाई के भएको छ हँ ?’ उहाँले मनमनै सोच्नुभयो तर केही भन्नुभएन । ‘हेरौँ, कतै बुद्धि फिरेछ कि ।’ उहाँले छोरीलाई अँगालोमै राखेर पिठ्यु थपथपाइ रहनुभयो । अनिता आमाको मायामा पग्लदै गई । उसले आफूले गरेको गल्तीको प्रयाश्चित आँशुको रुपमा बगाउन थाली । आमा भित्रभित्रै निकै खुशी हुनुभयो छोरी अब सुध्रिने भई भनेर ।

सरिना त्यो दिनपछि धेरै मिहिनेत गर्न थाली ।

# भेदभाव




**सुस्मिता बानियाँ**

झरीको मौसम थियो, चारैतिर दिउँसै पनि बादलले घेरेर अँध्यारो छाएको थियो । एक्काशी रितुको आमा कराउन थालिन्, "ए रितुको बुबा, कहाँ हुनुहुन्छ ? फेरि पानी पर्न लाग्यो, बाहिर बार्दलीबाट लुगा उठाएर भित्र राख्नु ।" उनी यती भन्दै भान्छामा छिरिन् ।

रितु १३ वर्षीया सबैलाई माया गर्ने, एकदमै दयालु र मिहिनेती केटी थिई । ऊ आफ्नो सौतेनी आमा, बुबा र सौतेनी भाइ लक्ष्यसँग एक सामान्य जीवन बाँचिरहेकी थिई ।

रितुको बुबा लुगा उठाएर तल भान्छामा आए । "हुरिबतास आउन लाग्यो रितु बाख्रा चराएर अहिलेसम्म आएकी छैन । कहाँ गई होली ?" भन्दै बुबा पिर्कामा थपक्क सुस्केरा हाल्दै बसे ।

"बाख्रा चराउन त गएकी छ नि, कहाँ नौ डाँडा काटेर गएकी छे र ? कति चिन्ता गरेको ? बरु छोरालाई लिन जानू । आज किन हो यति बेरसम्म पनि स्कुलबाट फर्केको छैन । बिजुली चम्केको भएर डरायो कि ।" भन्दै आमाले हप्की र दप्की लगाएर छोरालाई लिन पठाइन् ।

रितुको बुबा फत्फताउँदै निस्के । यसो आँगनमा चप्पल के लगाउन लागेका थिए रितु र लक्ष्य सिउ सिउ गर्दै बाख्रा धपाउँदै आएको देखे ।

आमा पनि भान्छाबाट निस्किन् र दौडिदै गएर छोरालाई



"बाबु कता गा'को ? हावाहुरी चलिरा'छ । मलाई रहेको थियो तेरो । तँलाई थाहा छ ?" यति भन्दै ...आएर भित्र गइन् ।

...बाट यो सबै दृश्य उनीहरूको छिमेकी शारदाले ... उनी यो सब देखेर हेऱ्या हेऱ्यै भइन् र मनमनै सोचिन्, 'कोही यति पत्थर दिल कसरी हुन सक्छ । आफ्नो छोरालाई यति माया र छोरीको चाहीँ वास्ता नै छैन । सौतेनी छोरी भए पनि ऊ पनि त छोरी नै हो ।'

रितु पनि गोठमा बाख्रा बाँधेर भित्र गई । आमाले भाइलाई मात्र माया गरेको तर आफूलाई कुनै वास्ता नगरेको देखेर उसलाई निकै दुःख लाग्यो । खाना खाएर आफ्नो कोठामा गएपछि उसलाई एक्लै रुन मन लाग्यो । उसले आँखाभरि आँसु लिएर आफ्नो आमालाई सम्झी । यदि मेरो पनि आमा भइदिएको भए मलाई कति माया गर्नुहुन्थ्यो होला । मनमा अनेक कुरा खेलाउँदा खेलाउँदै भुसुक्क निदाई ।

ऊ सधैँ झैँ बिहान चाँडै उठी र काम गर्न थाली । घर बढारी, माटाको घर भएकोले घर पोती बेलुका खाना खाएको भाँडा माझी । यति गर्दा गर्दै ७ बजिसकेको थियो । घरका पनि सबै उठे र भान्छामा आएर रितुले बनाएको चिया पिए ।

त्यो दिन मङ्गलबार थियो । मङ्गलबारको दिन रितुको सौतनी आमा सधैँ अर्को गाउँमा भएको गणेशको मन्दिर जान्थिन् । त्यसैले त्यो दिन उनी लक्ष्यलाई स्कुल पुऱ्याउन जान भ्याउँदिनथिन् ।

"रितु, आज तँ भाइलाई स्कुल पुऱ्यादे ल । म मन्दिर जान्छु, भ्याउदिन ।" आमाले रितुलाई भनिन् ।

रितुले हुन्छ भनी तर लक्ष्य बिचमा उठेर भन्यो, "आमा म आज स्कुल जान्न नि । म आज घरमै बस्छु । मलाई आज कस्तो खुट्टा दुखिरा'छ ।"

लक्ष्यको आमाले लक्ष्यलाई कुनै पनि कुरामा नाइ भन्दिन

थिइन् । लक्ष्यको त्यस कुरामा पनि उनले उसलाई स्कुल जानुपर्छ भनेर सम्झाउनु त कता कता हुन्छ, घरमै आराम गरेर बस भनेर भनिन् र मन्दिर जानको लागि बुबासँग निस्किन् ।

घरमा रितु र लक्ष्य बाहेक कोही थिएन । रितु पनि आमाबुबा निस्केको एकछिन पछि लक्ष्यलाई "म एक भारी घाँस काटेर आइहाल्छु, तिमी कतै पनि नजाऊ है ।" भनेर घाँस काट्न खोलातिर गई । रितु घाँस काटेर फर्की । लक्ष्य घरमै खेलेर बसिरहेको थियो । "लक्ष्य तिमी घरमै खेलिराख । मलाई थकाई लागिरा'छ एकछिन् सुत्छु अनि उठेर खाजा बनाइदिन्छु । त्यतिबेलासम्म कतै पनि नजाऊ ल ।" रितुले लक्ष्यलाई भनिन् ।

लक्ष्यले 'हुन्छ' त भन्यो तर ऊ एकदमै चञ्चले थियो । ऊ एक ठाउँमा चुप लागेर कहिल्यै बस्दैन थियो । खेल्दाखेल्दै लक्ष्यले टेबलमा राखेको सलाईको बट्टा देख्यो । उसलाई के सुर चल्यो कुन्नि सलाईको काँटी कोर्दै यताउती फाल्न थाल्यो । ती सलाईका काँटीहरू लुगामा लाग्यो र आगो लाग्न थाल्यो । लक्ष्यको खेलाचीको कारण आगो घरभरी फैलियो । लक्ष्य डरले गर्दा रुदै रितुलाई पुकार्न थाल्यो, "दिदी, दिदी, आगो..., मलाई बचाऊ ।"

रितु सुतिरहेकी थिई । लक्ष्यको आवाज सुनेर ब्युझिई । उसले आँखा खोल्दासम्म त घर भरी आगो लागिसकेको थियो । आगो देखेर ऊ एकदमै आत्तिई । उसले सबैभन्दा पहिला जसरी तसरी त्यो कोठाबाट निस्केर बार्दलीमा रहेको लक्ष्यले दौडेर गएर लक्ष्यलाई अँगालो हाल्न पुगी । त्यतिखेर ११ बजेको थियो । घरमा आगो लागेको कारण छरछिमेकहरू पनि सब आगो निभाउन आएका थिए ।

लक्ष्यको आमा र बुबालाई पनि कसैले उनीहरूको घरमा आगो लागेको बताइदिएछ । उनीहरू पनि हतारिँदै पुगे । रितु र लक्ष्यलाई आगोमा फसेको देखेर आमा र बुबाको हंसले ठाउँ छाड्यो । लक्ष्यको आमा त्यस्तो समयमा पनि मात्र लक्ष्यलाई बचाउनको लागि गुहार मागी रहेकी थिइन् । उनलाई त मतलब नै थिएन कि आगोमा रितु पनि फसेकी थिई ।

आगो एकदमै बढिसकेको थियो । त्यो आगोलाई अब केही गरेपनि नियन्त्रणमा ल्याउन नसकिने भइसकेको थियो । सबजना रोइकराइ गरिरहेका थिए । रितु र लक्ष्य पनि रोइरहेका थिए । लक्ष्यले “दिदी मलाई बचाउनु न” भन्दै रितुलाई करुण पुकार गरिरहेको थियो । यतिकैमा रितुले आँगन भन्दा अलि पर परालको कुन्यो देखी र हत्तपत्त लक्ष्यलाई जुरुक्क उचालेर परालको कुन्योमाथि फालिदिई । लक्ष्य परालमाथि झरेको भएर उसलाई केही पनि भएन र ऊ बच्यो । तर आगोमा रितु अझै पनि फसेकी थिई । सबैले उसलाई रितु त्यहाँबाट हम्फाल भने तर उसले फाल हान्न सक्दै सकिन ।

उसलाई अब ऊ बाँच्दिन भन्ने लागिसकेको  थियो । उसले आफ्नो सौतेनी आमातर्फ हेरी र भनी, “आमा, तपाईले मलाई जतिसुकै हेला गरे पनि आफ्नै जन्मदिने आमा झैं मान्छु । तर तपाईंले कहिल्यै पनि आफ्नो छोरीको रुपमा हेर्नुभएन । अब म बाँच्दिन, अब त छोरी भनेर बोलाइदिनु ताकि म यो आगोमा जलेर मरे पनि मेरो आत्माले शान्ति पाओस् ।” ऊ यति भन्दै खोक्न थाली ।

रितुको ती कुरा सुनरे उसकी सौतनी आमालाई एकदमै दुःख लाग्यो र रितुलाई हेरेर उनी भक्कालिन थालिन् र पहिलो पटक उनले रितुलाई छोरी भनेर बोलाईन् । त्यहाँ भएका सबका आँखा आँशुले भिजेका थिए ।

“छोरी तिमी नडराऊ । हामी तिमीलाई केही हुन दिदैनौं ।” भन्दै रितुको आमाले आगोमा माटो हाल्न थालिन् तर त्यतिबेलासम्म आगोको ज्वाला एक दमै बढिसकेको थियो । हेर्दाहेर्दै त्यो आगोको ज्वालाले रितुलाई पनि भेट्यो र रितु क्षण भरमै सबैको आँखा अगाडि जलेर छट्पटाउँदै प्राण त्यागी ।

सबजना रितु जस्ती माया लाग्दी केटीलाई अकालमा गुमाउनु पर्दा शोकमा डुबे । बढी असर रितुको आमालाई परेको थियो किनकी मर्दामर्दै रितुले उनलाई आमाको ममताको सही परिभाषा सिकाएर गएकी थिई ।



# मीनाको मिनी कम्प्युटर




**–नविना के.सी.**

अचानक मीनाको मिनी कम्प्युटर बिरामी पर्‍यो । मिनी कम्प्युटरले काम गर्न छाड्यो । लौन अब के गर्ने होला ?

"अङ्कल मेरो कम्प्युटर चल्दै चलेन ।" मीनाले मुकेश अङ्कलाई भनिन् ।

"हिजोसम्म त ठीकै थियो त । खै के भएको रहेछ हेरौँ त ।" मुकेश अङ्कलले भन्नुभयो ।

मुकेश अङ्कलले प्रयास गर्दा पनि कम्प्युटर खुलेन । "अब यसलाई त बनाउन लग्नुपर्छ होला मीना ।" अङ्कलले भन्नुभयो ।

मीनालाई नरमाइलो लाग्यो । 'कम्प्युटरले किन काम नगरेको होला ?' उनी चिन्तित भइन् ।

अचेल कम्प्युटर मीनाको नजिकको साथी बनेको थियो । जन्मदिनमा बाबाले उनलाई मिनी कम्प्युटर उपहार ल्याइदिनुभएको थियो । मिनी कम्प्युटर निकै आकर्षक थियो । घरमा नयाँ कम्प्युटर आएपछि उनी औधी खुसी भइन् ।

मीनाले आफ्नो कम्प्युटरको नाम मिनी कम्प्युटर राखिन् । मिनी कम्प्युटरलाई साथी बनाउन पाएकोमा मीना दंङ्ग थिइन् ।

मीना कहिले मिनी कम्प्युटरमा भिडियो गेम खेल्ने गर्थिन् । कहिले स्पोर्ट कारलाई बेतोडसँग युरोपको हाइवेमा कुदाउँथिन् । यस्तो गेम खेल्दा उनलाई निकै रमाइलो लाग्थ्यो । कहिले उनी इन्टरनेटमा च्याट गर्थिन् ।

अस्ट्रेलियामा बस्नुभएको हजुरबा र अन्टीहरूसँग पनि उनी

अनलाईनमा कुराकानी गर्थिन् । कहिले काँही आफूले नजानेको विषयमा जान्न मन लाग्दा मिनी कम्प्युटर कै सहायता लिने गर्थिन् । मिनी कम्प्युटरको इन्टरनेटबाट उनी यी सबै कुरा गर्थिन् ।



आज अचानक आफ्नो मिनी कम्प्युटर बिग्रिएपछि मीनालाई पर्नु पिर पर्‍यो । हुन पनि उनको घरमा ल्यापटप सधैं अफिसको काममा यस्त हुन्थ्यो । उनले बाबाकै ल्यपटपबाट सुरुमा कम्प्युटर चलाउन सिकेकी हुन् । स्कुलमा पनि उनी कम्प्युटरमा निकै जान्ने थिइन् । त्यसैले बाबाले उनलाई सानो, चिटिक्क परेको मिनी कम्प्युटर ल्याइदिनुभएको थियो ।

मीना मिनी कम्प्युटरले आफूसँग कुराकानी गरेको महसुस गर्थिन् । "मिनी तिमी मलाई धेरै किसिमले प्रयोग गर्न सक्छौ ।"

"मिनी तिमीलाई मैले धेरै चलाउँदा थकाई लाग्दैन ? दिक्क लाग्दैन ।" मीना पनि आफ्नो कम्प्युटरसँग दोहोरो संवाद गर्थिन् ।

"अहँ, लाग्दैन । हामी कम्प्युटरलाई कहिल्यै थकाई लाग्दैन । हाम्रो विशेषता नै यही हो ।" मिनी कम्प्युटरले जवाफ फर्काए झैं लाथ्यो । मीनाले मिनी कम्प्युटरमा नै आफ्नो नयाँ इमेल आईडी, हाईफाई र फेसबुकसमेत खोलेकी थिइन् ।

"बुझ्यौ मीना, इमेल, फेसबुक र हाइफाईजस्ता सञ्चारको नयाँ सञ्जालबाट विश्व छरिएर रहेका आफूलाई चिन्ने जुनसुकै साथीहरूसँग सम्पर्क गर्न सकिन्छ । जानकारी आदान प्रदान गर्न सकिन्छ ।" मिनी कम्प्युटर भन्ने गर्थ्यो । यसरी मिनी कम्प्युटर र मीना छोटो समयमै घनिष्ठ साथी बनिसकेका थिए । उनी फुर्सदको समय कम्प्युटरमै बसेर बिताउँथिन् ।

"मीना त खालि मिनी कम्प्युटरमै झुण्डिरहन्छे । होइन, यसलाई मिनी कम्प्युटरले कस्तो मोहनी लगाएछ ।" मिनी कम्प्युटरमा धेरै बस्यौ भनेर कहि काहीले काकीले भन्ने गर्नुहुन्थ्यो ।

"ठीकै छ नि त ! उसको रुचि कम्प्युटरमा छ भने उसलाई हामीले यही विषयमा पढ्न र सिक्न हौसला दिनुपर्छ, ।" बाबाले मीनाकै पक्ष लिएर यसो भन्दा मीना ज्यादै खुसी हुन्थिन् ।

"मैले बस्दै नबस्नु भनेको त हैन नि । तर चाहिनेभन्दा बढी समय पनि बस्नु ठीक होइन भनेको पो त । यो मिनी कम्प्युटर ल्याएदेखि त खै के भएको हो यो मीनालाई ?" आमा भन्नुहुन्थ्यो ।

"ममी त खालि मलाई मात्र कम्प्युटरमा बसेको देख्नुहुन्छ । बाबा र अङ्कल पनि त धेरै जसो सयम कम्प्युटरमा बिताउनुहुन्छ ।" मीनाले भनिन् ।

"उहाँहरू ठूलो मान्छे, अफिस र कलेजको कामले पो बस्नुहुन्छ त ? तिमी त सानो मान्छे, ।" आमा सम्झाउनुहुन्थ्यो ।

"म पनि भोलि कम्प्युटर इन्जिनियर त बन्ने हो नि ! अनि अहिलेदेखि नै सिक्नुपरेन त ममी ?" मीनाको जवाफ सुनेर सबैजना हाँस्थे ।

"ओहो ! यति सानी भएर पनि कति बुझ्ने कुरा गरेकी मेरी छोरीले ? मेरी छोरी मिनी इन्जिनियर भइसकिछन् ।" बाबाले मीनालाई माया गर्दै भन्नुहुन्थ्यो ।

मीनाले यी सबै कुरा झलझली सम्झिन् । यस अघि कहिल्यै मिनी कम्प्युटर बिग्रिएको थिएन । केही दिनदेखि बाबा पनि अफिसको कामले अर्कै सहर जानु भएको थियो । 'अब कम्प्युटर बानाएर कसले ल्याइदिन्छ ?' मीनालाई यसै कुराको चिन्ता थियो । मीना दुःखी भएर मिनी कम्प्युटर अगाडि बसिन् ।

"मिनी के भयो तिमीलाई ? किन तिमी  नखुलेको ? के तिमी मसँग रिसाएका छौ ?" मीनाले मिनी कम्प्युटरलाई सोधिन् ।

"होइन मीना, मलाई सञ्चो छैन ।" मिनी कम्प्युटर भन्यो ।

“किन ? के भयो र तिमीलाई ? हिजोसम्म त सञ्चै थियौ । राम्रैसित काम गरिरहेकी थियौ ।” मीनाले भनिन् ।

“मीना मलाई भाइरसले आक्रमण गरेका छ ।” मिनी कम्प्युटर बोल्यो ।

“भाइरस ? यो भनेको के हो ? यसले कसरी आक्रमण गर्छ ?” मीनाले नजानेको कुरा सोधिन् ।

भाइरस भनेको कम्प्युटरमा लाग्ने एक प्रकारको रोग हो । कम्प्युटरमा खराबी ल्याउन, बिगार्न र काम नलाग्ने बनाउका लागि केही खराब व्यक्तिहरूले भाइरस बनाएका हुन्छन् ।” मिनी कम्प्युटरले भन्यो ।

“ओहो ! यो त साह्रै नराम्रो काम हो । अनि भाइरस कम्प्युटर मा कसरी लाग्छ त ?” मीनाले हतारिदै जिज्ञासा राखिन् ।

“नचिनेको इमेल खोल्नाले पनि भाइरस सर्छ । यसै गरी नचिनेको वेबसाइटबाट जथाभावी फाइल डाउनलोड गर्दा पनि भाइरस सर्न सक्छ । जथाभावी प्रयोग गरिएको पेनड्राइभबाट त भाइरस झन छिटो सर्न सक्छ । त्यसैले पेनड्राइभ र सीडी प्रयोग गर्नुअघि स्क्यान गर्न बिर्सनु हुँदैन । एन्टीभाइरसले पनि भाइरसबाट जोगाउन सक्छ । भाइरस लागेपछि हामी बिरामी पर्छौं र सही तरिकाले काम गर्न सक्दैनौं ।” मिनी कम्प्युटरले ज्यादै महत्वपूर्ण कुरा गरेको सुरनेर मीना सतर्क भइन् ।

मैले हिजो साथीको पेनड्राइभ मिनी कम्प्युटरमा प्रयोग गरेको थिएँ । त्यसैबाट भाइरस  सरेको हुनुपर्छ । अबदेखि म यो कुरा सधैं याद राख्छु । धन्यबाद मिनी कम्प्युटर तिमीलाई ।” मीना खुशी भइन् ।



# सपनाको गिरफ्तारी




**–आशिष गुरुङ्ग**

शनिबारको दिन थियो । बाहिर ठूलो झरी परेको थियो । पानी परेको हुनाले कोही पनि बच्चा बाहिर निस्केका थिएनन् । साजन र राजनका दाजुभाइ पनि घरभित्र हजुर बुबाको कोठामा बसिरहेका थिए । भाइ राजनले हजुर बालाई भन्यो, "हजुरबुबा, हजुरले हामीलाई अस्तिको हप्तामा कथा नै सुनाउनु भएन । आज हजुरले कथा सुनाउनु पर्छ ।"

दाजु राजनले पनि भन्यो, "हो हजुरबुबा, आज हामीलाई कथा सुनाउनु पर्छ ।

हजुरबुबाले नातिहरूको कुरा काट्न नसकेर भने, "हुन्छ बाबु, ल आज कथा सुन । यो कथा हाम्रो नेपालकै पूर्वी क्षेत्रको बारा जिल्लाको मनोवा बस्तीको व्यक्तिको हो ।"

जेठो नाति साजनले सोध्यो, "हजुरबुबा, कथा त हाम्रै गाउँको हो कि क्या हो ?"

"हो, त्यस्तै मान न ।" यति भनेर हजुरबुबाले कथा सुरु गर्नुभयो ।

"बाबु हो, एक समयमा हाम्रो गाउँमा सोमनाथ नामको एक गरीब व्यक्ति बस्ने गर्थ्यो । उसको एक श्रीमती, दुई छोरा र दुई छोरी थिए । ऊ रिक्सा चलाउँथ्यो । कमाई राम्रो थिएन । त्यसैले घर को आर्थिक अवस्था कमजोर थियो । समय बित्दै थियो । ठूलो छोरा कक्षा ८ मा पढ्ने भयो । साथै एक छोरी तीनमा अर्को छोरी दुईमा र कान्छा छोरा एकमा पढ्दै थिए । उनीहरू तमाङ बस्तीमा बस्थे ।

बस्ती नजिक मनोथा मा.वि. मा उसका बच्चाहरू पढ्थे । बिहान खाएपछि बेलुका के खाने भन्ने परिस्थिति आउन थाल्यो ।

गरिबीको कारण जेठो छोरा पढ्दा पढ्दै मजदुरी काम गर्न थाल्यो । परीक्षाको समयमा विद्यालय जान्थ्यो । अरु बेला भने मजदुरी गरी घरको दु:ख उसले आफ्नो काँधमा बोक्थ्यो । समय बित्दै गयो, जेठो छोरा भएकाले उसको काँधमा जिम्मेवारी रहेको थियो । उसको पढाई पनि बिस्तारै कमजोर हुँदै गयो । दश कक्षामा पुग्दा ऊ पास हुन नसक्ने अवस्थामा पुग्यो । अब उसलाई एस.एल सी परीक्षा पास गर्न गाह्रोको कुरा रह्यो । उसले ट्युसन पढ्ने बारे सोच्यो तर रकम जुटाउने समस्या थियो । बाबुले जुटाउन नसक्ने कुरा उसलाई थाहा थियो । त्यति बेलाको समयमा ट्युसन पढ्नको महिनाको रु. १५० लाग्थ्यो । टेस्ट परीक्षा सकेपछि उसको दुई महिनाको बिदा थियो । अनि विदापछि एस.एल सी. परीक्षा थियो ।

एक दिन दिउँसो ऊ साथीको घरमा गएको थियो । उसले साथीको बुबा र केही मानिसहरू वनमा काठ चोर्न जान लागेको कुरा गरेको सुन्यो । केही नबोली त्यहाँबाट घर फर्कियो । उसले मनमनै काठ चोर्न उनीहरूसँग जङ्गल पस्ने निधो गऱ्यो ताकी ट्युसन खर्च जोहो गर्न सकियोस् । हुन पनि ऊसँग केही उपाय बाँकी थिएन । उसले घरमा आएर बाआमासँग सल्लाह गऱ्यो । गरिबीको कारण



उसलाई त्यसो गर्न दिन उसको बुबा र आमाको बाध्य भए ।

गोधुली साँझमा मान्छेहरू निर्धारित ठाउँमा जम्मा भए । ऊ पनि त्यही भिडमा मिसियो । राति काठ लिएर फर्किदा वन पालेहरूले हल्ला खल्ला गरेको आवाज सुने । उनीहरूले काठ तस्करीको आशङ्का गरेर आवाजलाई पच्छ्याउन थाले । वनपालेहरूले पिछा गरेको चाल पाउनसाथ सक्नेहरू वनबाट छिटो छिटो भाग्न थाले । विचरा सानो केटो भारी बोकेर अरु जस्तो दौडन सक्दैनथ्यो । उसलाई एक मन त काँधको काठ भुईमा फालेर भाग्ने सोच आयो तर त्यो गरेमा उसले ट्युसन पढ्नको लागि रकम जम्मा गर्न सक्दैनथ्यो ।

ऊ हतार गर्दै भाग्न खोज्यो तर वनपालेको दृष्टिबाट बच्न सकेन । काठ बोकेर मान्छे भाग्दै गरेको देखेर वन विभागको पालेले गोली चलायो । गोलीको आँखा हुने कुरो भएन । पालेले गोली



चलाउँदा मान्छेलाई ताकेको थियो कि तर्साउने विचारले फायर मात्र गरेको थियो ? थाहा भएन । तर काठ बोकेको केटो भने त्यही लडेको देखियो । गोली उसलाई मात्र होइन उसको सपनालाई पनि लागेको थियो । विचार केटोको कत्रो सपना थियो होला ।" दुबै दाजु भाइले हजुरबुबाको आँखा आँसुले रसाएको देखे । साथै हजुरबुबाको स्वर परिवर्तन भएको पनि महसुस गरे ।

हजुरबुबाले भन्दै जानुभयो, “त्यो केटोको साथ साथै उसको सपनाहरू पनि मऱ्यो, मात्र १६ बर्षको उमेरको बच्चाले जानी नजानी बाध्यताले मृत्युको मुखमा पर्नु पऱ्यो । के उसले गरेको काम गलत थियो होला ?" हजुरबुबाले नातिहरूलाई प्रश्न सोध्नुभयो ।

दुवै नातिले प्रश्नको जवाफ हैन उल्टै प्रश्न सोधे, “त्यो केटालाई चिन्नु हुन्छ ?"

हजुर बुबाले जावाफ दिनुभयो, “त्यो मेरै जेठो दाइ थियो र म कक्षा एकमा पढ्ने उसकै भाइ ।"



# समाको ताज



–रश्मिता श्रेष्ठ

समाले बच्चैदेखि सुन्दरी प्रतियोगितामा अत्यन्तै चाख राख्थी । टेलिभिजन, नेटमा पनि ऊ त्यस्तै कार्यक्रम हेर्न रुचाउँथी । पढाइका साथै नृत्य, सङ्गीत, खेलकुद, हाजिरीजवाफ सबै कुरामा अब्बल समालाई उसको आमाबुबाले उसको सबै इच्छालाई हौसला प्रदान गर्थे ।

समा हरेक वर्ष हुने मिस वर्ड प्रतियोगिता लगायत मिस नेपाल प्रतियोगिताहरूको एक एक कुरा टिप्पणी गर्थी । उसलाई कुन वर्ष, कुन देशकी, के नाम गरेकी केटीले प्रतियोगिता जिती भनेर कण्ठ थियो । उसलाई विजेताहरूले आफ्नो आमाबुबाको नाम आफ्नो जितसँग जोड्दा त उसलाई झनै विजेता बन्ने चाहना हुन्थ्यो । "आहा ! म पनि मिस वर्ड हुन पाएर आफ्नो देशको नाम राख्न पाए कति रमाइलो हुन्थ्यो ।" ऊ मनमनै सोच्थी ।

तर के गर्नु ? समा अरु कुराहरूमा जति अब्बल भए तापनि उसको एउटा कमजोरी उसको लागि सधैं टाउको दुखाइ हुन्थ्यो । 'मेरो यही कमजोरीको कारण मेरो लक्ष्यमा पुग्न पछि पर्ने त होइन ?' उसको मन पिरोलिने गर्थ्यो । उसको कमजोरी भनेको उसलाई अगाडि गएर बोल्नै निकै डर लाग्थ्यो । कहिले काहीं स्कुलको लाइनमा गएर आफ्नो केही शब्द राख्न पनि उसलाई महाप्रलय पर्थ्यो ।

एक दिनको कुरा हो, शिक्षकले कक्षामा सबैजनालाई आफ्नो जीवनको लक्ष्यको बारेमा अगाडि गएर बोल्न लगाउनुभयो । सबैले पालैसँगै भने तर जब समाको पालो आयो केही बोल्नै सकिन । ऊ



चुपचाप मूर्ति सरह उभिरही ।

“समा यता आऊ त ।” शिक्षकले समालाई खाजा खाने समयमा बोलाउनु भयो । “तिमी आज कक्षामा किन नबोलेको भन त ? सन्चो छैन कि ?”

टाउकोको इशाराले समाले होइन भनी ।

“त्यसो भए तिम्रो लक्ष्य के हो त ?” शिक्षकले सोध्नुभयो ।

“सर, म मिस वर्ड बन्न चाहन्छु ।” समाले भनी ।

“अनि किन कक्षामा नभनेको त ?”

“सर, मलाई अगाडि गएर बोल्नै डर लाग्छ । केही बोल्ने सक्दिन ।” उसले शिर निहुराउँदै भनी ।

“हरेस नखाऊ । तिमी सबै कुरामा अगाडि भए जस्तै बोल्ने कुरामा पनि अगाडि हुन सक्छ्यौ । मिस वर्ड बन्ने मान्छेसँग त बोल्ने सिप हुनु अत्यन्त जरुरी छ । मिस वर्ड बन्न त सबै कुरामा परिपक्क हुनुपर्छ । त्यसैले आजैदेखि बोल्ने अभ्यास गर । अनि हरेक दिन कक्षाको अगाडि बोल्ने, हुन्छ ?” शिक्षकले समालाई सम्झाउदै भन्नुभयो ।

शिक्षकको कुरा सुनेर समाले आजैदेखि अभ्यास गर्ने र बोल्ने सिपमा पनि सबै भन्दा अब्बल हुने अठोट गरी ।

भोलिपल्टदेखि उसले हरेक क्षण आफ्नो कमजोरीलाई सुधार्ने प्रयास गरी । कुनै पनि कार्य पहिला अत्यन्त कठीन हुन्छ तर कठिनाइलाई सामना गरेर अगाडि बढेमा पछि बाटो एकदमै सजिलो हुन्छ भने जस्तै समालाई सुरु सुरुमा कक्षाको अगाडि गएर बोल्दा पनि निकै गाह्रो भयो । घरमा जति अभ्यास गरे पनि अगाडि गएपछि सबै बिर्सन्थी । तर उसले प्रयास गर्न छाडिन । पछि बिस्तारै उसलाई बानी पर्‍यो र तयारी विना पनि निर्धक्कसँग जुनै विषयमा पनि बोल्न सक्ने भई ।

“स्याबास । म तिम्रो प्रगतिले अत्यन्तै खुसी छु ।” शिक्षकले समालाई भन्नुभयो । त्यसपछि  समा अरु क्रियाकलापमा अब्बल भए

जस्तै बक्तृत्वमा पनि सबैभन्दा अब्बल भएर धेरै पुरस्कारहरू प्राप्त गरी ।

यसरी दिन, महिना, बर्ष गरी समय बित्दै गयो । समा ठूली भई । समाले एस.ई.ई. दिएर विद्यालयबाट विदा भई ।

धेरै वर्ष पछिको कुरा हो । शिक्षक कापी जाँची रहेको बेला विद्यालयको गार्डले भन्यो, “सर, हजुरको नाममा एउटा चिठी आएको छ ।”

“कसको होला ?”

“खोई, समा नाम लेखिएको छ ।” शिक्षकलाई कता कता नाम सुने जस्तो लाग्यो र हत्तपत्त चिठी खोलेर हेरे । चिठीमा लेखिएको थियो-

आदरणीय सर

नमस्कार ।

सर मलाई चिन्नुभयो ? म हजुरको विद्यार्थी समा अस्रुमाली ।



उही विद्यार्थी, जसलाई तपाईले सबैको सामु बोल्न सक्ने आँट र साहस दिनुभएको थियो । सर, आज मैले त्यो दिन कक्षामा भन्न नसकेका कुरा गरेर देखाएको छु । सर मैले आज मेरो सपनाको ताज जितेको छु र यो जितको श्रेय हजुरलाई जान्छ । सर यदि त्यो दिन तपाईले मलाई नसम्झाउनु भएको भए सायद आज मेरो लक्ष्य पूरा हुने थिएन होला । आज जे छु सिर्फ तपाईले गर्दा छु, त्यसैले हजुरलाई हृदयदेखि धन्यवाद दिन यो चिठी लेखेकी हुँ । मेरो मनमा हजुरप्रति सधै सम्मानको भाव हुनेछ ।

हजुरकी विद्यार्थी

समा अस्रुमाली ।

आँशु पुछ्दै शिक्षकले चिठी पट्याउँदै गर्दा गार्डले सोधे, “के लेखेका रै’छ सर ?”

“ए मेरो विद्यार्थीको रै’छ ।” शिक्षक यति भनेर टोलाई रहे ।

यसरी समाले आफ्नो सपनाको ताजलाई विपनाको ताजमा परिणत गरी ।

# सोझी राधिका




–अविनाश श्रेष्ठ

ताप्लेजुङको शिखरमा पर्ने डोलमिन नामक एउटा बिकट गाउँ थियो । गाउँ विकट भए पनि त्यहाँको सुन्दरताले हरेकलाई आफूतिर तानेको थियो । धेरै मानिसहरू दिन दिनै त्यहाँ घुम्न आउँथे ।

विकट भएकाले गाउँका मानिस अशिक्षित थिए। आफू अशिक्षित भएपनि आफ्ना सन्तानलाई पढाउन गाउँलेहरू मिलेर त्यहाँ एउटा माध्यमिक विद्यालय स्थापना गरे । त्यस गाउँमा एउटा राधिका नाम गरेकी केटी आफ्नो बुबासँग बस्थी । आमा सानैमा बितेकी हुनाले राधिकाको हेर विचार उसको बुबाले जसो तसो भए पनि गरिरहेका थिए ।

गाउँकै विद्यालयबाट राधिकाले एस.ई.ई राम्रो अङ्क ल्याएर पास गरी । उसको बुबा राधिकाको बारेमा निकै चिन्तित थिए । उसलाई कलेजमा पढाउने खर्च बुबासँग थिएन । यसकारण राधिका एस.ई.ई पछि गाउँमै घाँस दाउँरा गर्दै दिनहरू काट्दै थिई ।

चैत्रको महिना थियो । राधिका घाँस काटेर घर फर्किर्दै थिई । उसले बाटोमा एउटा २५-३० बर्षको मानिस आफूतिर आइरहेको देखी । “नानी, ए नानी ! तिमी कता जान लागेकी ।” गाउँमा आइपुगेको नौलो मान्छे, वेवास्ता गर्नु पनि भएन । “घर जान लागेकी नि । अनि हजुर टाढैबाट आउनु भएको जस्तो छ नि ।” राधीकाले भनी ।

“हो, लाहुरबाट आएको हुँ । नाम चाही सुवास ।” केटोले भन्यो । गफ गर्दै दुवैजना राधिकाको घरमा पुगे ।

“बुबा बाहिर आऊ त ।” भन्दै राधीकाले आफ्नो बुवालाई बोलाई । बुबा बाहिर निस्कनु भयो । राधीकाले सुवासतर्फ देखाउँदै ‘ऊ सुवास लाहुरबाट यो गाउँ घुम्न आएको रे ।’ उसको बुवाले र सुवासले एक अर्काको परिचय गरे । राधिका चिया पकाउन भित्र पसी ।

सुवास र राधिकाको बुवा घरको बाहिरी पिँढीमा बस्दै गफगाफ गर्दै थिए । राधिकाले भित्रबाट चिया ल्याएर दुबैलाई दिई । चिया खाएपछि सुवास उठेर, “ल हजुर, म अहिलेलाई लागेँ । पछि भेटौँला ।” भन्दै विदा माग्यो ।

“कहाँ जानुहुन्छ यति बेला ? साँझ पर्न लाग्यो । आजको रात यतै बास बस्नुहोला र भोलि बिहान निस्कनुहोला ।” राधिकाको बुबाले साँझको पाहुनालाई लखेटेर पाप बोक्न चाहेनन् । त्यसो भनेपछि त्यो केटो त्यहीँ बस्ने भयो ।

बेलुका खाना खाएपछि राधिका भाँडा माझ्न बाहिर निस्की । उसको बुवा र सुवास गफ गरिरहेका थिए ।

“बुबा, मलाई तपाईकी छोरी राधा राह्रै मनपऱ्यो ।  म उसलाई आफ्नो जीवनसाथी बनाउन चाहन्छु ।” गफ कै मेसोमा केटोले भन्यो । आफूले नचिनेको मानिसले छोरीको हात मागेकोले उनी केही बोल्न सकेनन् ।

सुवासले फेरि थप्यो, “म उसलाई संसारको सारा खुसी दिनेछु । केही कम हुन दिन्न ।”

“जीवन काट्ने कुरो, छोरीको राय पनि बुझ्नु पर्ला बाबु । तपाईको घर परिवारका कुरा पनि होलान् । यसै त म के भनौँ र बाबु ?” बुढाले भने ।

“चिन्ता नगर्नुहोला । मेरो रोजाइ नै बा आमाको रोजाइ हो । राधाको विचारचाहीँ बुझ्नुहोला र भोलिबिहान जवाफ दिनुहोला ।” सुवासले भन्यो ।

राधिकाको बुबा एकछिन सोचमग्न भए र सुवासलाई खाटमा सुताएर आफू भुईंमा सुते । राधिका पनि सबै काम सकेर आफ्नो कोठामा सुत्न गई ।

रातको बाह्र बजेतिर राधिकाको बुवा उठेर शौचालय गए । उनी रातभरि छोरीको बारेमा सोचिरहेका थिए । छोरीको बिहेको बारेमा चिन्ताले निदाउन सकेका थिएनन् । उनी शौचालयबाट आएर ओछ्यानमा पल्टिदै सोच्न थाले, ‘छोरीको उमेर पनि भएको छ । केटो पनि सज्जन र सुशील छ । योसँग बिहे गरेपछि मेरी छोरीले सुख पाउँछे ।’ उनी यस्तै सोच्दै निदाउन पुगे ।

बिहान सबेरै उनले आफ्नो मनको कुरा छोरीलाई सुनाए । उनले सम्झाए, “छोरी मान्छेको जात, आज नभए भोलि तिमी अर्काको घर जानुपर्ने । तिम्रो भविष्यको निर्माण गर्ने कर्तव्य मेरो हो । त्यसैले मैले तिम्रो बिहे सुवाससँग गरिदिने निर्णय गरेको छु । के छ तिम्रो विचार ?”

उसले घोसे मुन्टो लगाई । “तर म गएपछि तपाईलाई कसले हेर्छ ?” उसले यत्ति भनी ।

“हैट लाटी, किन पिर गर्छेस् मेरो । म बुढो कति नै बाँच्छु र । म त तेरो जीवन खुशी भएको हेर्ने चाहन्छु । मेरो पिर नगर ।” उनले सम्झाए । विवाहको उमेर पुगेकी राधिकाले बाबुको कुरालाई हुन्छ पनि भनिन र हुन्न पनि भनिन । छोरीले हुन्न नभनेपछि विवाह गर्न राजी भएको अर्थ लगाए र छोरीको विवाह त्यस युवकसँग गरिदिने निधो गरे ।

त्यसको केही दिनपछि दुवैको बिहे गरिदिएर गाउँबाट बिदाइ गरेर पठाए । करिब ५-६ दिनको हिडाइपछि उनीहरू झापा पुगे र त्यहाँबाट बसमा विराटनगर गए । बसमा भएका कारणले राधिकाले सुवासलाई खासै बुझ्न पाइन्न ।

विराटनगर पुग्दा साँझ भएकाले उनीहरू दुबै होटलमा बास बसे । सुवासले कोठामा पुगेपछि राधिकालाई भन्यो, “भोलि हामी भारत जादैछौँ ।” राधीकाले “किन र ?” भनी ।

सुवासले भन्यो, “अब हामी त्यही गएर बाँकी जीवन खुशी साथ बिताउने हो ।” भन्दै सुत्न खाटमा पल्टियो । राधिका पनि सुती ।

बिहान झिसमिसेमै उठेर दुबै भारततर्फ लागे । खुला सिमाना



भएकाले उनीहरूलाई त्यहाँ जान सहज भयो । भारत पुगेपछि सुवासले राधीकालाई एउटा होटलमा लिएर गयो। त्यहाँ एउटा व्यक्ति पहिले नै उनीहरूलाई कुर्दै बसेको थियो । त्यो केटाले सुवासलाई, 'बधाई छ साथी, तँलाई ।' भन्यो । राधिकालाई ' नमस्ते भाउजु' भन्दै अभिवादन गऱ्यो ।

"को हो ?" राधिकाले सुवासलाई सोधी ।

"मिल्ने साथी हो ।" सुवासले जवाफ दियो ।

त्यो केटाले सुवासलाई ईशारा गर्दै 'उता हिड्' भन्यो । केटाले उता लादै सुवासलाई 'माल बबाल छ' भन्दै पैसाको दुईओटा बिटा सुवासको हातमा राखिदियो । यो सबै दृश्य राधीकाले हेरिरहेकी थिई । वरिपरि होटलमा कोही पनि थिएनन् । सुवास र त्यो कटो राधिका भएको ठाउँमा आए ।

"हामी एकछिन बाहिर गएर आउँछौ । तिमी एकछिन यहीँ बस ल ।" सुवासले भन्यो र निस्कियो । सुवासलाई कुर्दै बस्दा तीन घण्टा बित्यो तर सुवास फर्किएन । राधिकाको मनमा चिसो पस्न थाल्यो र अन्जान ठाउँमा एक्लै बस्नुपर्दा डर पनि लाग्न थाल्यो । केही समयपछि एउटा युवक आएर उसको झोला समातेर गाली गर्दै एउटा कोठामा लगेर थुनिदियो ।

केही दिनपछि राधाले आफू बेचिएको थाहा पाई । उनले सुवासले यस्तो काम गर्ला भनेर सपनामा पनि सोचेकी थिइन । त्यहाँको अत्याचार सहन नसकिने थियो । केही दिनपछि यस्तो अत्याचार सहन सकिदैन भन्ने ठानेर त्यहाँबाट भाग्ने निधो गरी । भाग्ने क्रममा होटलको सुरक्षाकर्मीले देख्यो र कुटपिट गर्न थाल्यो । होटलको साहु पनि आएर उसलाई कुटपिट गर्ने काममा सामिल भयो । त्यहाँबाट निस्किएर नेपाल फर्कन सकेको दिन सुवासलाई खोजेर जसरी पनि दण्ड दिलाउने सङ्कल्प गर्दै ऊ फेरि नारकीय जीवनमा फर्कन बाध्य भई ।

# हिम्मत




**–प्रतिमा रिमाल**

"के भा'छ कुन्नि आजकल यो केटोलाई, खाजा कहिल्यै खाँदैन। सधैं टोलाइरहेको हुन्छ।" आमा शर्मिला फत्फताउँदै आकाशको कोठामा चिया र पाउरोटी राखिदिएर भान्सा कोठामा जानुभयो। आकाशको कोठा सानो थियो जसमा एउटा दराज, एउटा खाट र एउटा टेबल मात्रै थियो। आकाश एक चन्चले केटो थियो। पठनमा रुचि भने पटक्कै राख्दैन थियो तर फुटबल खेल्न भने उसलाई कसैले पछि पार्न सक्दैन थियो। ६ कक्षामा पढ्ने आकाशको बाबु अनिल कडा थिए। बिहान आकाश उठ्न ढिलो भएकोले अनिलले साह्रै थर्काए। हात गोडा लुकलुक कापाउँदै आकाश रुन्चे अनुहार बनाएर कोठामा गएको थियो।

'राणा शासन अन्त्य हुन १०३ बर्ष लागेको थियो तर खै हाम्रा बाबाको शासन सकिन कति वर्ष पो लाग्ने हो ?' आकाश मनमनै सोच्थ्यो। अर्धवार्षिक परीक्षा पनि नजिक आउँदै थियो। आकाश पढाइमा आफ्नो सम्पूर्ण ध्यान केन्द्रित गराउन खोज्थ्यो तर पढ्दा पढ्दै फुटबलको दुनियाँमा गएका चाल नै पाउँदैन थियो। आकाशले प्रथम त्रैमासिक परीक्षामा जम्मा ५० प्रतिशत अङ्क ल्याएको थियो। 'यसपालि पनि त्यति मात्रै आयो भने बुबाले पक्का होस्टलमा पठाउनुहुन्छ।' उनको चिन्ता बढ्दै थियो।

परीक्षाको नतिजा पनि प्रकाशन भयो। निकै साहस जुटाएर आकाशले आमाका हातमा मार्कसिट दियो। आमाका हातबाट

मार्कसिटको पाना बुबाका हातमा पुग्यो । छोराको अङ्क देखर बुवा निलोकालो हुनुभयो । हुरिएर आकाशको नजिक पुग्नुभयो । आकाशको त ४५ प्रतिशत मात्रै आएको रहेछ ।







"यस्तो चालाको पढाइले के गरी खान्छन् तैले ?" आकाशतिर आँखा तर्दै हातको पाना भुइँमा फ्याात्ट फ्याँकिदिएर बुबा बाहिर निस्कनु भयो । आकाशको अनुहार डरले झन निलोकालो भयो उनलाई रातभर निद्रा लागेन । ओछ्यानमा त्यसै छट्पटाइरह्यो । 'काकाको छोरो रियाज सधै ए प्लस ल्याउँछ । फूपुकी छोरी प्रतिमा टप टेन विद्यार्थी नै हो । आफ्नो भने के भएको होला । जति मिहिनेत गरे पनि बालुवामा पानी खन्याएको जस्तै हुन्छ ।' आकाशलाई निकै दु:ख लाग्यो ।

यस्तैमा एक दिन मामा टुप्लुक्क उनका घरमा आइपुग्नु भयो । मामालाई देखेर आकाश निकै खुशी भयो । उसले आफूले चित्रकला प्रतियोगितामा तृतीय र फुटबलमा बेस्ट प्लेयर पाएको पुरस्कार मामालाई देखायो । मामा पनि भान्जाको सफलतामा निकै खुसी हुनुभयो । आकाशले आफ्नो पढाइको बारेमा भने एक शब्द पनि बताएन । मामाले पनि सोध्नु भएन ।

बेलुका बुवा पनि अफिसबाट फर्किनु भयो । बुवा आमा र मामाका बीचमा आकाशकै बारेमा चर्चा चल्यो । सबै कुरा सुनी सकेपछि मामाले भन्नुभयो, "भिनाजु, हजुरलाई आफूले पढेको

साइन्सको एउटा फर्मुला याद छ ?" मामाको कुरा नबुझेर अनिल एकछिन अलमल परे ।

"प्रेसरका लागि एरिया अनुसारको मात्र फोर्स लगाउनु पर्छ । पचास किलो मात्र बोक्ने क्षमता भएको छोरालाई नब्बे किलोका भारी बोकाएर उकालोमा दौडी भनेर हुन्छ र ? फुटबलमा आकाशले गोल्ड मेडल ल्याएछ । सबैले त्यो ल्याउन कहाँ सक्छन् र ?" मामाले भन्नुभयो ।

"अरु सब बेकारका कुरा हुन ? पढाइमा जित्ने पो जित्ने ।" बुबा अनिल मामासँग सहमत भएनन् ।

"अरुको उदाहरण दिई दिई तपाईले छोराको आत्मविश्वास सबै खाइसक्न भयो भिनाजु । प्रतिस्पर्धा अरुसँग होइन सधैँ आफैसँग गर्नुपर्छ । अलि मिहिनेत गर छोरा, पहिलेको भन्दा बढी ल्याउने कोशिश गर भनेर हौसला बढाउनु पर्नेमा आफ्नो अपेक्षाको भारी बोकाएर उसलाई कमजोर बनाउनु'भो ।" मामाले भन्नुभयो ।

"के कमी गरेका छौँ र हामीले ?" अनिलले भने ।

"सबै मान्छे कारखानाको उत्पादनजस्तो एकै किसिम र रङरोगनका कहाँ हुन्छन् त भिनाजु ? सबैको आ-आफ्नै क्षमता हुन्छ । कोही पढाइमा अब्बल हुन्छन् कोही सिर्जनात्मक कुरामा, कोहीलाई भने खेलमा उसको क्षमता अनुसार अघि बढाउनुपर्छ ।" टेबलमा भएको स्याउ खादै मामाले भन्नुभयो ।

अनिल एकछिन गम्भीर भएर भने, "तिमीले भनेको कुरा पनि ठिकै हो ।"

अनिलको पनि मन फेरियो । अर्को सातादेखि आकाश प्रत्येक शनिबार फुटबल खेल्न जाने भए । उनले मन लगाएर पढे । दोस्रो त्रै मासिक परीक्षको रिजर्ट लिन बुबा आफैँ पुग्नुभयो । यसपालि ६० प्रतिशत अङ्क आएको थियो । त्यो थाहा पाउँदा पनि बुबाको अनुहार अँध्यारो भएन । उहाँले आकाशको पिठ्युमा धाप मार्दै भन्नुभयो, "स्यावास ! १५ प्रतिशत बढायौ । सधैँ आफैलाई उछिन्न मिहिनेत गर ।"

# आभार:

कथाका लागि :
-अविनाश श्रेष्ठ
-अभिलेख आचार्य
-आर्यस रिजाल
-आशिष गुरूङ
-भावना अधिकारी
-नविना के.सी.
-नम्रता थापा
-प्रतिमा रिमाल
-प्रविण मुडभरी
-रश्मिता श्रेष्ठ
-लोकेश शाही
-साईना सिं डङ्गोल
-सुस्मिता बार्निया

मन्तव्यका लागि :
लोकेन्द्र बहादुर खड्का
(प्रिन्सिपल)

प्रकाशन सहयोगका लागि:
-अनिता तामाङ
-अनिशा सिटौला
-अनु तामाङ
-अनुप नेपाल
-अर्पण श्रेष्ठ
-अस्मित सेडाई
-आकाश थिङ
-आकृति पण्डित
-आदिप पाण्डे
-आयुश के.सी.
-आयुश्मा पण्डित
-आरती बुढाथोकी
-ईशा गौतम
-ईश्वर गुरूङ
-कश्मिर श्रेष्ठ
-कुशल अर्याल
-कुशल पौडेल
-केशबहादुर गुरूङ
-गरिमा कार्की
-दिपेश के.सी
-दिवाना सुन्दास
-नियोन गुरूङ
-निर्जरा अधिकारी
-निर्मला तामाङ
-निशा गिरी
-पूजा ढुङ्गाना
-पुरूषोत्तम तामाङ
-प्रतिभा गुरूङ
-प्रसुन देवकोटा
-विक्रम गजुरेल
-विजय लामा
-विपिन गुरूङ
-मनिषा लामा
-मन्दिरा सुन्दास
-ममता गुरूङ
-मीना तामाङ
-युवराज पुन
-रजिशा के.सी.
-रूकेश ढुङ्गाना
-रेश्मा तिमल्सिना
-रोशन तामाङ
-लश्विना पौडेल
-शिशिर भट्टराई
-श्रृङ्खला तिमल्सिना
-सामुयल पौडेल
-सिमा मानन्धर
-सुनिल तामाङ
-सुरक्षा के.सी.
-सुरेश तामाङ
-सुशान्त कुावर
-सोनु गुरूङ
-स्नेहा भण्डारी
-स्वयम् मानन्धर
-स्वस्तिका पन्त
र हिमरश्मि हाई स्कुल।

**नोट:** यो संग्रह २०७४र २०७५ सालमा प्रकाशित कल्पलोक पुस्तक कै निरन्तरता हो। सम्पादक भन्नुपर्ने कुरा पहिलो खण्डमा नै भनिएको हुनाले यसमा राखिएको छैन। कथाको यो खण्ड पनि कक्षा १० का विद्यार्थीहरु कै सक्रियता र इच्छाशक्तिका कारण प्रकाशन सम्भव भएको हो।

